# जय गुरु गणपति

जय गुरु गणपति मँगल मूर्ति ।
भजन गरौं हामी तिम्रै कीर्तन ॥
जय गुरु गणपति..............
शुभ कार्यका स्वामि प्रभु हौ ।
गौरी पुत्र विनायक तिमी हौ ॥
आशीश देउन हे गजानन,
तिमी नै हाम्रो संकट हेर्ने ।
जय गुरु गणपति............
विचार बुद्धिको खानी तिमी हौ ।
श्री सम्पतीको मालिक तिमी हौ ॥
सिद्धि देउन हे लम्बोदर,
तिमी नै हाम्रो विघ्न हर्ने ।
जय गुरु गणपति.............

# कृष्ण मुरारी

कृष्ण मुरारी भजन गरौं ।
पार लगाउ हामीलाई ॥
कृष्ण मुरारी............
सागर बिचमा अल्झिरहेछौं ।
छैन कोही सहारा ॥
जीवन नौका डुब्नै लाग्यो छैन कोही भरोसा ।
केवल तिम्रै रुप छ मनमा
पार लगाउ हामीलाई ॥
कृष्ण मुरारी............
जीवन हाम्रो ब्यर्थै भयो अभिलाषा ॥
घोर अंध्यारो भइ सक्यो अब
छैन केही उज्यालो
केवल तिम्रै रुप छ मनमा
पार लगाउ हामीलाई
कृष्ण मुरारी............

# नारायण प्रभु

नारायण प्रभु तिम्रै किर्तन ।
तनले गर्छौं मनले गर्छौं ॥
शंख चक्र गदा पद्म लिएको ।
तिम्रो स्वरुप अनोखा ॥
यो तन झुक्छ यो मन झुक्छ ॥
तिम्रै पाउमा परी
नारायण प्रभु.........
मुकुट पिताम्बर बन मालाको ।
पहिरन अति निराला ॥
यो तन झुक्छ यो मन झुक्छ ॥
तिम्रै पाउमा परी
नारायण प्रभु.........
दिन दुःखी असहायहरुको ।
तिमीमा नै छ भरोसा
यो तन झुक्छ यो मन झुक्छ ॥
तिम्रै पाउमा परी
नारायण प्रभु.........

# ॐ नम : शिवाय

ॐ नम : शिवाय

जय शिव शंकर भोले बाबा ।

जय शिव शंकर भोले बाबा ॥

तिम्रो नाम जपदा जपदै, मेरो मोह र माया ॥

छोड्न सकुँ तिमीमा पुगन सकुँ

जय शिव शंकर भोले बाबा...........

तिम्रो रुप हेर्दा हेर्दै सब यो तन मन मेरो ॥

छोड्न सकुँ तिमीमा पुगन सकुँ

जय शिव शंकर भोले बाबा...........

तिम्रो किर्तन गर्दा गर्दै मेरो प्राण परु

छोड्न सकुँ तिमीमा पुगन सकुँ

जय शिव शंकर भोले बाबा...........

# म त तिम्रै सेवक हुँ

म त तिम्रै सेवक हुँ भगवन......।
म त तिम्रै सेवक हुँ ॥
तिमी जे भन्छौ त्यही म गर्छु ।
तिमी जे भन्छौ त्यही म गर्छु ॥
म त तिम्रै सेवक हुँ भगवन......
यो सृस्टी, यो धरती, यो आकास ॥
सब नै तिम्रै रचना हुन्
म त तिम्रै सेवक हुँ भगवन......
यो सुखी जन, यो दुःखी जन, यो मुनी जन॥
सब नै तिम्रै रचना हुन्
म त तिम्रै सेवक हुँ
यो शक्ति, यो भक्ति, यो मुक्ति ॥
सब नै तिम्रै रचना हुन्
म त तिम्रै सेवक हुँ भगवन......

# काली आमा

काली आमा काली आमा,
मलाई बालक सम्झि, रक्षा गर्नु होला
रक्षा गर्नु होला ॥
तिम्रो नाम लिएर दुःख हर्छ भन्छन् ।
तिम्रो गीत गाएर संकट टर्छ भन्छन ॥
काली आमा काली आमा..........
तिम्रो सेवा गरेर आशीष पाउछ भन्छन् ।
तिम्रो ध्यान गरेर मुक्ति पाउछ भन्छन् ॥
काली आमा काली आमा............
तिम्रो चिन्तन गरेर पाप नाश हुन्छन् ।
तिम्रो स्तुति गरेर भाग्यमानी बन्छन् ॥
काली आमा काली आमा...........

# हे मानव शुभ कर्म गर

हे मानव शुभ कर्म गरौ शुभ कर्म गरौ
बुद्धको अनुयायी बनेर ॥
बुद्धं शरण गच्छामी, धर्म्मम् शरणं गच्छामी
संघं शरणं गच्छामी
बुद्धको सन्देश अंगालेर लोभ मोह हटाऔ
दीन दुखीको सेवा गरेर सबलाई उद्धार गरौ
प्राणीहरुको कष्ट हुने कर्म गरेर सुख नखोजौ
आपनो र अरुको रक्षा गरेर
आफु बाचौ अरुलाइ बचाऔ
पञ्चशील पालन गरेर युद्ध र अहम हटाऔ
सानो ठुलो भेद नगरौ, हामी सबै एकै हौ
अरुको भुमि नष्ट हुने कर्म गरेर वीर नबनौ
भ्रातृत्वको मेल बढाएर
विश्व भरी नै सुख शान्ति फैलाऔ

सम्पति पत्नी पशु पुत्र कुञ्जर ।
सम्पुर्ण पृथ्वि घर कोश सुन्दर ॥
पाई नवै रत्न बनेर नै धनी ।
ऐश्वर्य सारा जति नै मिले पनि ॥
के पाउला मानिस शान्ति या सुख ।
जो मृत्युका तर्फ सँधै छ उन्मुख ॥
यो लोकका वस्तुहरु सबै थरी ।
समाप्त हुन्छन् क्रमले जसोगरी ॥
यज्ञादिले अर्जित लोक संयुत ।
साना ठुला छन् सब दोषले युत ॥
निर्दोष छन् केवल शुद्ध केशव ।
दिऊँ उनैमा मन बुद्धि यी सब ॥

www.sakhasaarathi.blogspot.com

जसले दिन्छन् धर्मको काममा ! तिनै पुग्छन्
प्रभुको धाममा !!

ति दयालु ईश्वर हुन् लक्ष्मी जी का पति,
तिनको सेवा गरे हुन्छिन् लक्ष्मी खुशी अति ।
जसले दिन्छन् धर्मको काममा ! तिनै पुग्छन्
प्रभुको धाममा !!

खर्च भयो भन्नु हुन्न धर्म कर्म गर्दा,
पछि त्यहि काम लाग्छ आफुलाई पर्दा ॥
जसले दिन्छन् धर्मको काममा ! तिनै पुग्छन्
प्रभुको धाममा !!

प्रभुबाटै कृपा हुँदा मिल्यो जिन्दगानी,
मानिस भै जिउन पायौं बन्यौं भाग्यमानी ।
जसले दिन्छन् धर्मको काममा ! तिनै पुग्छन्
प्रभुको धाममा !!

तन-मन-धनद्वारा उनकै सेवा गरौं,
मानवता बचाएर मानिस भै मरौं ॥
जसले दिन्छन् धर्मको काममा ! तिनै पुग्छन्
प्रभुको धाममा !!

## कृष्ण तिम्रो सम्झना कहिले नछुटोस्

कृष्ण तिम्रो सम्झना कहिले नछुटोस्
गर्छु काम जे जति भक्ति नटुटोस् ।
कृष्ण तिम्रो सम्झना .............. .............. !
चित्तवृत्ति यो सबै पाउमा झुकोस्
भुल-त्रुटि छ जति माफ़ नै रहोस् ।
नाश गर पाप मेरो जन्म जन्मको
दुःख-कष्ट रोग हर यही जन्मको ॥
कृष्ण तिम्रो सम्झना .............. .............. !
पुनर्जन्म नदेउ फेरी यो संसारमा
नाथ लागोस् बिन्ती मेरो यही हजुरमा ।
प्राणी मात्रलाई देखुँ आफु सम्झना
कृष्णरुप राख्न सकुँ मनमा धारणा ॥
कृष्ण तिम्रो सम्झना .............. .............. !
मर्ने बेला प्राण कण्ठ आउँदा पनि
हृदयदेखि भन्न सकुँ कृष्ण नै भनि ।
रात दिन साँझ बिहान सम्झँदै हरि
काल बितोस् आठै प्रहर भजनै गरी ॥
कृष्ण तिम्रो सम्झना कहिले नछुटोस्
गर्छु काम जे जति भक्ति नटुटोस् ।
कृष्ण तिम्रो सम्झना .............. .............. !